# वैदिक देवताबारे दुई मतहरु

वैदिक ज्ञान-विज्ञानको सम्बन्धमा शोध कार्य प्रारम्भिक अवस्थामै छ । कतिपय शोधकार्यका निष्कर्ष भने साँच्चै नै रोचक छन् ।

चर्चा आरम्भ गरौं वैदिक देवताहरुका सम्बन्धमा बी.जी. रेलेको एक विचित्र मतबाट । सन् १९३१ मा प्रकाशित पुस्तक वैदिक गड्स् ः एज दि फिगर्स अफ् बायोलोजी मा उनले प्रतिपादित गरेका छन्कि सबै वैदिक देवता मनुष्यका स्नायु संस्थानका विभिन्न चेतना केन्द्र तथा क्रियाहरुका प्रतीक हुन् । देवताको रुपमा जुन चेतनसत्तालाई वैदिक ऋषिहरुले कल्पना गरे त्यो मानव चेतनाकोनै प्रतिरुप हो । यस चेतनाको अधिष्ठान स्नायु तन्त्र मस्तिष्क सुष्ाम्ना एवम् तन्त्रिकाहरु नै देवहरुको निवासस्थान हो । उनकै शब्दमा- मेरो यो दृढ विश्वास छकि वेद स्नायु संस्थान एवम् तिनको कार्य प्रणाली सम्बन्धमा ऋषिहरुद्वारा लेखिएको पुस्तक हो । यी सबैलाई वैदिक ऋषिहरुले एक यस्तो भाषामा व्यक्त गरेका छन् जो तिनीहरुको निवासस्थानसँग सम्बन्धित प्राकृतिक दृश्यहरुबाट लिइएका रुपकहरु अथवा प्रतीकहरुले युक्त छ

यथा पिण्डे तथा ब्रहमाण्डे यस प्रसिद्ध भनाइझैं वैदिक ऋषिहरुले मस्तिष्कलाई संपूर्ण ब्रहमाण्डको लघु-प्रतिकृति सम्झिए । अतः उनीहरुले मस्तिष्कको विभिन्न विभागहरुसँग सम्बन्धित यी देवताहरुलाई बाहय प्रकृतिका विभिन्न क्षेत्रसँगपनि संबद्ध गरेका छन् । वैदिक देवताहरुको यस्तो स्वरुपमाथि दृष्टि राखेरनै सम्भवतः प्रसिद्ध प्राचीन भारतीय भारतवर्षीय शल्यचिकित्सक सुश्रुतले भनेका छन्कि वेदमा वर्णित सबै देवताहरुको मानव शरीरमा स्थायी अस्तित्व छ । श्री रेलेले शरीर-शास्त्रसंबन्धी अनेक सूक्ष्म प्रमाणहरुका आधारमा यो सिद्ध गर्ने प्रयत्न गरेका छन्कि प्रमस्तिष्क नै इन्द्र हो । प्रमस्तिष्कको मध्य भागमा स्थित अनुभूतिको केन्द्र थ्यालेमस् नै अग्नि हो । लघु-मस्तिष्क पूषन् हो । मेडुला एवम् लघु-मस्तिष्कको समीपको पोन्स् नामक भाग रुद्र हो । सुष्ाम्ना विष्णु हो । प्रमस्तिष्कको दाहिने र बायाँ भागबाट आएर सुष्ाम्नामा प्रवेश गर्ने दुई स्नायु समूह अश्विनौ शब्दले बताइएका हुन् । स्नायुहरुको यी तीन समूह नै ऋभु नामले ऋग्वेदमा वर्णित गरिएका छन् । मस्तिष्क एवं सुष्ाम्नाको चारैतर्फ रहेका द्रव मित्र र वरुण मैत्रावरुण हुन् । रेलेले ऋग्वेदका अनेक ऋचाहरुको प्रमाण िदंदै योपनि सिद्ध गरेका छन्कि रोदसी शब्दको अर्थ अन्य भाष्यकारहरुले अर्थ गरेजस्तो- पृथिवी एवम् आकाश होइन वस्तुतः यो शब्द प्रमस्तिष्कका दुई गोलाद्र्धको वाची हो । मुखमण्डलको मांसपेशीहरुलाई नियन्त्रित गर्ने एवम् त्यहाँबाट प्रमस्तिष्कसम्म सूचना लैजाने तन्त्रिकाहरुलाई मरुत् संज्ञा दिइएको हो । यिनीहरु गएर त्यो सेतु सँग मिल्दछन् जसलाई वैदिक भाषामा रुद्र नाम दिइएको छ । यसप्रकारले यी रुद्रका पुत्र हुन् । भ्रूण एवम् तत्पश्चात् शिशुको रुपमा विकसित हुनेवाला कोषनै हिरण्यगर्भ हो । आदि-आदि ।

वैदिक देवताहरुका सम्बन्धमा एक अन्य विचित्र मत श्री परमशिव अय्यरको रहेको छ । आफ्नो रिक्स ९च्ष्पक० नामक पुस्तकमा उनले प्रतिपादित गरेका छन्कि ऋग्वेदमा त्यस समयका घटनाहरुको उल्लेख छ जब पृथ्वीको जन्म भएकोमात्र थियो र पर्वतहरु नदीहरु तथा समुद्र आदिको भूतलमा क्रमशः निर्माण भइरहेको थियो । भूतलमा हुने विविध प्रकारका परिवर्तनहरुलाई नै वैदिक ऋषिहरुले ऋग्वेदको रुपमा उपनिबद्ध गरेका हुन् र संपूर्ण देवता भू-गर्भ विद्या सम्बन्धी दृश्यहरु का नै वाची हुन् । वेदमा वर्णित मरुद्गणको उत्पत्ति क्रियाहरु तथा रुपसँग समानता देखाउँदै उनले सिद्ध गरेका छन्कि मरुतहरुको गण पर्वतका उच्च शिखरमा जमेका हिम हिमयुक्त शिखर एवम् बरफिलो झंझावातलाई सूचित गर्दछ । मरुतहरुलाई रुद्रस्य सूनवः तथा पृश्निमातरः पृश्नि माता येषां भनिएको छ । पृश्नि कुन्तल मेघ सिरस हो जो सदा अग्ला पर्वत भन्दापनि माथि हावामा तैरिरहन्छ र कहिल्यै पृथिवीमा उत्रिंदैन । ब्राहमण ग्रन्थहरुमा रुद्रलाई अग्नि भनिएको छ । वस्तुतः रुद्र अन्तरिक्षको अग्नि विद्युत् या तडित् हो । यसै तडित्को कारणलेनै उच्च पर्वतीय शिखर तथा तीभन्दा माथिको वायुमण्डल विद्युन्मय हुन्छ र फलस्वरुप मेघको वाष्पसँगको संयोगबाट ती शिखरमा हिमकण जम्दछन् । मरुत् र रुद्रलाई अनेक औषधिहरुका स्वामी तथा रोग विनाशनमा निपुण बताइएको छ । वस्तुतः विद्युत्को आवेशले युक्त हिमयुक्त तीब्र झंझावात वायुमण्डलमा रहेका रोगोत्पादक कीटाणु एवम् अन्य हानिकारक तत्वहरुलाई नष्ट गरी वातावरणलाई शुद्ध बनाउँछ । साथै यस्तो झंझावात पश्चात् विविध प्रकारका औषधिहरुको पनि तीब्रताले वृद्धि हुन्छ । यस्तो झंझवात प्रायः अचानक पूर्व संकेतबिना नै आउँछ । अतः मरुत्हरुलाई विमान तथा अश्वहरुबिनानै विचरण गरेको वर्णित गरिएको छ ।

यस्ता अनेक मतहरु देखेर श्री गयाचरण त्रिपाठीले आफ्नो पुस्तक वैदिक देवता उद्भव और विकासमा भन्नुभएको छ- वैदिक मन्त्रहरुको दुरुहता एवम् अनेक प्रकारका अर्थहरुलाई व्यक्त गर्न सक्ने क्षमताले ऐना जस्तै निर्मल एवम् स्वच्छ वैदिक मन्त्रहरुमा हेर्ने जो कोहिले पनि तिनीहरुको पृष्ठभूमिमा स्थित रहस्यहरुलाई खोज्ने इच्छा गर्दछभने उसलाई तिनमा आफ्नै भावनाको प्रतिबिम्ब देखा पर्दछ । हुनसक्दछ प्रत्येकमा सत्यको केही केही अंश होओस् । वैदिक ज्ञान-विज्ञानको सम्बन्धमा अझसम्म हामी यति अधिक् प्रारम्भिक अवस्थामा छौंकि यससम्बन्धमा प्रत्येक नवीन दृष्टिकोणहरुलाई हामीले स्वागत गर्नु पर्दछ । अस्तु ।